# श्री संकटा राजकीर्ति महाविहार
# ( टेबहाल) को
# संक्षिप्त परिचय



*श्री संकटाको मन्दिर (नयाँ)*

**जुद्धरत्न वज्राचार्य**
राजकीर्ति महाविहार
(टेबहाल, काठमाडौं)

# श्री संकटा राजकीर्ति महाविहार (टेबहाल) को संक्षिप्त परिचय



श्री संकटा मन्दिर


जुब्ररत्न बज्राचार्य

राजकीर्ति महाविहार

(टेबहाल, काठमाडौं)

प्रकाशक:-

सुनकेशरी वज्राचार्य
का.म.न.पा. २२ वडा
टेबहाल, काठमाडौं ।

प्रथम संस्करण ‌ १००० प्रति

प्रकाशन मिति बुद्ध सं. २५४०
ने.सं. ११९७
वि.सं. २०५३
ई.सं. १९९६

मूल्य रू. : २०/-

# समर्पण

स्वर्गीय पिता आशारत्न वज्राचार्य
र
स्वर्गीय माता मयजु वज्राचार्यमा
श्रद्धापूर्वक समर्पण गर्दछु ।

- जुद्धरत्न वज्राचार्य

## बौद्ध मतानुसार दशक्रोधहरुको स्तुति

इन्द्रादयो महावीरा लोकपाला महार्द्धिकाः
कीलयन्ति दशक्रोधान् विघ्नहन्तान्नमोऽस्तुते ॥

# विषय-सूची

# भूमिका

यो पुस्तकको पाण्डुलिपि सबै हेरी नमिलेको ठाउँमा मिलाई सहयोग गरिदिनु भै मलाई हौसला प्रदान गरिदिनु भएकोमा श्री फणीन्द्ररत्न वज्राचार्यज्यूलाई हृदयदेखि हार्दिक धन्यवाद ज्ञापन गर्दछु ।

प्रकाशन कार्यमा सम्पूर्ण सहयोग गरिदिनु भै पुस्तक प्रकाशन गरिदिनु भएकोमा श्री चक्रमुनि वज्राचार्यलाई हार्दिक धन्यवाद ज्ञापन गर्दछु ।

यसमा भएका त्रुटिहरू औंल्याई दिनुभई ती त्रुटिहरू सच्याई दिनुभएमा आगामी संस्करणमा सहृदय पाठकवृन्दमा सच्याई प्रस्तुत गर्नेछु ।

यस पुस्तकमा मुद्रण त्रुटि भएमा क्षमा प्रार्थना गर्दछु । मैले सहायक ग्रन्थहरू र आफ्नो स्वविवेकले यो पुस्तक लेख्ने साहस गरेर पाठकवृन्दमा प्रस्तुत गरेको छु ।

टेबहाल, काठमाडौं
२०५३

- जुद्धरत्न वज्राचार्य

# दुइ शब्द

यो नेपाल मण्डललाई नेपालीहरू पुण्यभूमि भन्दछन् भने काठमाडौंलाई विदेशी लेखकहरू मन्दिरै मन्दिरको शहर भन्दछन् ।
केही दशक अगाडिसम्म काठमाडौंमा मानिसहरूको घरभन्दा
१. मन्दिरहरू नै बढी थिए । यहाँ हिन्दु र बौद्ध मन्दिर, मठ, शिवालय,
विहार, चैत्य, गुम्बाहरू सँगसँगै रहेका छन् । यहाँ एउटै देव-
२ देवीलाई हिन्दु र बौद्धहरू आ-आफ्नो मतानुसारको देवदेवीको
३. रूपमा मान्दछन् र पूजा पाठ गर्दछन् । यो नेपालीहरूको धार्मिक
सहअस्तित्व र धार्मिक सहिष्णुताको ज्वलन्त उदाहरण हो ।

४ काठमाडौंको मुटुको रूपमा रहेको टुंडिखेलको चारैतिर
५ मात्र हेरे पनि हिन्दु र बौद्धहरूले मानिआएका प्रसिद्ध देव-देवीहरूको
६ मन्दिर र विहार पाउँछौं । टुंडिखेलको पूर्वमा प्रसिद्ध भद्रकालीको
७ पीठ छ भने दक्षिणतिर फिबो अजिमाको पीठ छ । पश्चिमतिर
८ बस्ती भएकोले मन्दिरहरू पनि धेरै छन् ।

९ नैऋत्य कोणमा जगन्नाथको मन्दिर छ । त्यसपछि लहरै नागस्थान , संकटाको मन्दिर र राजकीर्ति महाविहार, बौद्ध चैत्य, भोंसिकोको षडक्षरी विहार, सेतो गणेश मन्दिर, महाकालको मन्दिर र पञ्चकुमारी पीठ, महाबौद्धको चैत्य र विहार, दुइअजिमाको पीठ छन् । उत्तरतिर १६ हाते गणेशको मन्दिर छ । प्रत्येक शनिवार र मंगलवारका दिन भक्तजनहरू विशेषतः भद्रकाली, संकटा र महाकालको मन्दिरमा पूजा, पाठ गर्न जाने गर्दछन् ।

संकटालाई संकष्ट तारिणी देवीको रूपमा मान्दछन्, कोही पद्मान्तकको रूपमा पनि पुज्दछन् । वैद्य डाक्टरकहाँ मानिसहरू

कोही रोग लागेपछि औषधोपचारको लागि जँचाउन जान्छन् भने कोही रोग नलाग्दै कुनै रोग नलागोस् भनी सल्लाह लिन जाने गर्दछन् । त्यस्तै संकटा देवीको मन्दिरमा रोग-व्याधि, विघ्न-बाधा आदि अनिष्ट हटोस् भनी पूजा पाठ र दर्शन गर्न जान्छन् भने कोही ग्रह दशा विग्रेर हुने अनिष्ट नलागोस् भनी पूजा, पाठ र दर्शन गर्न जान्छन् । शनिवारको दिन संकटाको मन्दिरमा दर्शनार्थीहरूको भीड लागेको देख्न सकिन्छ । यसबाट यो प्रतीत हुन्छ यी भक्तजनहरूले संकटा देवीबाट आफूले चिताए अनुसारको फल प्राप्त गरेका छन् अन्यथा यसरी भक्तजनहरूको घुइँचो लाग्ने थिएन । तत्काल फल दिने देवीहरूमा संकटा पनि एक हुन् भनी मानिआएको छ ।

संकटाका पूजारी श्री जुद्धरत्न वज्राचार्यले श्री संकटा र राजकीर्ति महाविहार (टेबहाल) को संक्षिप्त परिचय लेख्नुभएर हामीहरूलाई संकटा र प्राचीन राजकीर्ति महाविहार सम्बन्धी धेरै जानकारी दिनुभएको छ । वहाँको भनाइ अनुसार यो संक्षिप्त परिचय मात्र हो । इतिहासका विद्वानहरूले अन्वेषण र अनुसन्धान गरेमा संकटा र राजकीर्ति महाविहारको प्राचीनता र ऐतिहासिक महत्त्वका वस्तुहरू धेरै नै प्राप्य छन् । समयको अन्तरालमा यी महत्त्वपूर्ण वस्तुहरू हराएर बिलाएर जान सक्छन् । केही त हराइ पनि सके । यसकारण गुठी संस्थान र पुरातत्त्व विभागको सुदृष्टि यसतर्फ पर्नु नितान्त आवश्यक छ । संकटाको मन्दिरमा सुरक्षाको व्यवस्था हुनु पनि त्यत्तिकै आवश्यक छ ।

इ्वाबहाल — **फणीन्द्ररत्न वज्राचार्य**

२०५३ मार्ग शुक्ल १५

# श्री संकटा र राजकीर्ति महाविहार (टेबहाल) को संक्षिप्त परिचय

यस पुण्यभूमि नेपालमा आजभन्दा करिब पन्ध्रसय वर्ष अगाडि कलिगत संवत ३६०६ विक्रम संवत ५६२ इस्वी संवत ५०५ तिर तत्कालीन लिच्छवी राजा श्री नरेन्द्रदेवको राज्यकालमा नेपालमा दुर्भिक्ष र अनावृष्टि भई हाहाकार मच्चिएको थियो। तत्काल दु:ख संकट निवारण गर्न राजाले कामरूप कामाक्ष (आधुनिक भारतको आसाम राज्य) को पीठमा विराजमान हुनुभएका श्री रातो मच्छेन्द्रनाथ (आर्यावलोकितेश्वर) लाई यस उपत्यका कान्तिपुरमा ल्याउन पाए विघ्नबाधा संकट दु:ख निवारण भई शान्तिसंग बस्न पाउने मनमा राखी राजाले शान्तिकराचार्यलाई आह्वान गरे। राजाको इच्छा पूरा गरिदिन शान्तिकराचार्यले आफ्ना शिष्य श्री बन्धुदत्त वज्राचार्यलाई आज्ञा भयो। आज्ञा मुताबिक कामरूप कामाक्षमा राक्षस कुलमा जन्म भएका श्री करुणामयलाई नेपालमा ल्याउँदा श्री संकटा पनि कान्तिपुरमा बिराजमान हुन श्री करुणामयको पछि पछि लाग्नुभयो। त्यस बखत श्री संकटाले कटुवालदहमा पुगेपछि आफ्नो दायाँ हात देखाउनुभयो। सो हातको आकार एउटा शिलामा अद्यापि रहेकै छ। दायाँ हात देखाउनु भएकोले नेवारी भाषा (नेपाल भाषा) मा

पाल्हा देखाउनु भएकोले पाल्हाद्यो भन्ने चलन छ । केही दिनसम्म श्री संकटालाई कटुवालदहको पर्वतमा विराजमान गराई त्यसपछि रातो गच्छेन्द्रनाथको ललितपुरको त:बहालको जति जग्गा छ त्यतिकै जग्गा दिई राजा श्री नरेन्द्रदेवले श्री संकटालाई कान्तिपुरको राजकीर्ति महाविहार (टेबहाल) बनाउन लगाई विराजमान गराए । राजाको आज्ञा मुताबिक तान्त्रिक शास्त्रोक्त विधि विधान अनुसार प्रतिष्ठा कार्य आदि गरी श्री संकटालाई मन्दिरमा स्थापना गरियो । श्री शंकटाको भूई तल्लामा श्री रातो मछेन्द्रनाथको प्रतिमा पनि अद्यापि विराजमान छ ।

अर्को कंथनअनुसार वीर पुस्तकालयको च.नं. १०३७ राजामाला वंशावली र वि.पु.च.नं. १०१० मा श्री संकटा देवीको स्थापना सम्बन्धमा दुईवटा वंशावली रहेका छन् । यस्तो अर्को वंशावली काठमाडौं महानगरपालिका ॐबहाल नबहिल स्थित स्व.पं. कमलानन्द वज्राचार्यसंग पनि छ भन्ने उल्लेख छ । पुरातत्व विभागमा यस सम्बन्धमा अन्य लेखहरू पनि छन् भन्ने विश्वस्त सूत्रबाट ज्ञात भएको छ । शाक्यसिंह तथागतले आचार्य बन्धुदत्तले पद्मान्तक दश क्रोधादि देवताहरूको स्थापना गरिनेछ भनी भविष्यवाणी गर्नुभएको कुरा स्वयम्भूपुराणमा उल्लेख भएको छ ।

टेबहालको जनश्रुति र किंवदन्ती अनुसार करिव २२०० वर्ष पहिले टेबहाल नामाकरण हुनु अगावै यहाँस्थित विहारको नाग तीर्थ विहार नामले प्रचलित भैरहेको थियो ।

***श्री संकटाको सुन्दर मन्दिर, काष्ठकलापूर्ण देव मूर्ति तोरणद्वार*** एवं तुनालहरूले सुशोभित छ । पहिलेको झिंगटी छानो बिग्री

जस्तापाताको छाना छाएको थियो । पछि वर्तमान श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाह देव सरकार वि. सं. २०४२ फागुन १३ गतेदेखि चैत्र १३ गते सम्म उपत्यका ३ शहर जिल्ला (काठमाडौं, भक्तपुर र ललितपुर) को भ्रमण गरिबक्सेको थियो । श्री ५ को सदिच्छा मुताबिक जस्तापाता निकाल्न लगाई तामाको पाताको छाना छाउन लगाई बक्स्यो ।

पाँचवटा ठूलाठूला गजूर मध्ये बीचमा सुनको मोलम्बा गरिएको गजूर रहेको छ ।

स्व. दम्बरमान डंगोल, टेबहालले एकवटा सुनको गोलम्बाको पता चढाएको छ भने अर्को दाता श्री बुद्धरत्न स्थापित, टेबहाल नछेले तामाको पता चढाएको छ ।

उत्तर मोहडा फर्किएको श्री संकटाको दुई तल्ले मन्दिरको पहिलो तल्लामा उत्तराभिमुख श्री संकटा देवीको कृष्णवर्ण सुन्दर मूर्ति विराजमान छ । श्री देवीको दायाँ हातमा खड्ग र बायाँ हातमा पद्म छ । शिरमा चन्द्रकलायुक्त रत्नमुकुट धारण गरिएको छ । गलामा नागमाला र शरीरमा सुन चाँडीका थरी थरीका गहना पहिरिएका छन् । श्री संकटा देवी दशक्रोध योग योगिनी एवं अष्टमात्रिका गण सहित भएर उज्वल शान्त हँसिलो मुहारले उत्तर दिशातर्फ हेरी बिराजमान भएकी छिन् । श्री संकटा देवीको शरीर भाग सदा सर्वदा ढकींले छोपिएको हुन्छ । काठमाडौंका प्रसिद्ध विभिन्न देवदेवीहरू जस्तै श्री संकटा पनि भक्तजनहरूको संकष्ट हटाउने भएकोले संकटा नाम रहेको भनिन्छ ।

शैव, वैष्णव आगमका भक्तजनहरूले श्री संकटालाई

भगवतीको रूपमा मान्दछन् भने कोही शनि सकटाको रूपमा मान्दछन् । वज्रयानी बौद्ध धर्मालम्बीहरू तन्त्र प्रसिद्ध देवताको रूपमा पूजा र भावना गर्दछन् । यी बौद्ध मतालवम्बीहरूले श्री संकटालाई पञ्चान्तकको रूपमा पनि पुकार्दछन् । यसरी एउटै देवतालाई हिन्दु र बौद्ध धर्मावलम्बीहरूले आ-आफ्नो सम्प्रदाय र तान्त्रिक पद्धति अनुसार पूजा उपासना गर्दछन् । श्री संकटा देवीको यस मन्दिरमा शनिवार र पर्व पर्वका दिन भक्तजनहरूको ठूलो भीड लाग्दछ ।

हिमालयको काखमा रहेको नेपालको राजधानी काठमाडौं उपत्यकाभित्र बिराजमान भएकी श्री संकटा देवीको कहिले प्रादुर्भाव भयो, कहिले कहाँबाट कसरी ल्याई स्थापना गरियो यस विषयमा कहीं पनि उल्लेख भएको देखिँदैन । देवताको भव्य सुन्दर मूर्ति, कला र विहारभित्र पाइएका लिच्छवी कालीन शिलापत्र अध्ययन गर्ने र यहाँ स्थित प्रचलित रीति रिवाज तथा परम्पराको आधारमा विस्तृत अध्ययन तथा अनुसन्धान गर्न बाँकी नै छ । वैज्ञानिक रूपले पुरातात्विक अनुसन्धान गर्दै गएमा अरू महत्वपूर्ण तथ्यहरू पनि पत्ता लगाउन सकिनेछ । यसको अनुसन्धान तथा अन्वेषण गर्ने कार्य पुरातत्वविज्ञ तथा ऐतिहासिक तथ्य संकलनकर्ताहरूको हातमा निर्भर छ ।

श्री संकटा नेपालमा बिराजमान हुनुभएको सन्दर्भमा पुरातत्वविद तथा ऐतिहासिक संकलन कर्ताहरूले लिच्छवी कालीन शिलापत्र आदि अनुसन्धान तथा अन्वेषण गरेर आफ्नो परम्परागत सांस्कृतिक धरोहरलाई सुरक्षा गर्ने व्यवस्था हुनुपर्दछ । यसको

उत्तरदायित्व हामी नेपालीहरूको आफ्नै काँधमा छ ।

जेष्ठकृष्ण (बछलागा) अष्टमीका दिन श्री बन्धुदत्त वज्राचार्यले (विशिष्ट बौद्ध विद्वान, तान्त्रिक विद्याले निपुण हुनुभएकोले) राजा नरेन्द्रदेवको आज्ञा मुताबिक आफ्नो मन्त्रसिद्ध मूल कलश २ मध्ये १ मा श्री संकटा र अर्कोमा वरुण (योगिनी) को समेत कलशमा प्रवेश गराई साधना गरिए अनुसार १२/१२ वर्षमा १ पल्ट कटुवाल दहमा श्री संकटाको पुजारीहरू गई श्री संकटाको आराधना गरी भित्र्याउने चलन आजसम्म चलिरहेको छ । श्री संकटाको १२ वर्षे पर्व सम्पन्न गर्ने कार्य समेतमा लेखकले २०१२, २०२४/२/१५/२, २०३६ र २०४८/२/२०/२ मा समेत ४ चार पल्ट भाग लिने सौभाग्य प्राप्त भईसकेको छ ।

ने. सं. १०१७, १०३८, १०५२, १०६४ मा पनि १२ वर्षे मेला सम्पन्न भएको छ भनी मेरा स्वर्गीय पिता आशारत्न वज्राचार्यले लेखिराख्नु भएको रेकर्डबाट देखिन्छ । २०३६ र २०४८ सालको १२ वर्षे पर्वमा थकाली ज्ञानरत्न, नोको जुद्धरत्न, स्वको पूर्ण, प्यको पूर्णरत्न र न्याको पुष्परत्न भै सम्पन्न भएको थियो । २०४८ को पर्वमा नेपाल टेलिभिजनबाट मसंग अन्तर्वार्ता लिएको थियो । मैले यस पर्वको महत्ववारे गरेको वर्णन नेपाल टेलिभिजनबाट प्रसार भएको थियो ।

टेबहालको सिखाकार थकाली र नोको २ जनाले श्री संकटाको जात्रा शुरु हुने स्थान सानेपादेखि चामरले श्री संकटालाई हम्काई ल्याउने चलन चल्दै आएको छ ।

श्री संकटाको १२ वर्षे शोभायात्रा हुने ठाउँ ललितपुर जिल्ला

सानेपाबाट शुरू भई बागमती, पूर्णेश्वर, त्रिपुरेश्वर, टुंडिखेलबाट शाही नेपाल वायु सेवा निगमको प्रवेश द्वारबाट भित्र्याई टेबहाल भित्र प्रवेश गराउनु अगावै ५ जना थकाली वज्राचार्यनीहरूले लसकुस स्वागत गरी श्री संकटाको मन्दिरमा प्रवेश गराई रात भरी खटबाट २ वटा कलश निकाली मूलद्वार अगाडि अष्टदल पद्म लेखी आसनमा बिराजमान गराउने परम्परा छ। त्यसपछि शोभायात्रामा ल्याउनु पर्ने सांस्कृतिक बाजा मध्ये मखनबहालका वज्राचार्यहरूले पंचताल (पयता) बाजा बजाउने, टेबहालका सिख्राकारहरूले गुंलाबाजं बजाउने र खिचापोखरीका डंगोल (दगु) हरूले धिमे बाजा बजाई आफ्नो आफ्नो तालमा द्योल्हायगु बाजा बजाई विसर्जन गरिन्छ। ती बाजाहरूलाई श्री संकटाका पुजारी थकालीले दशपत्र दक्षिणा र किभु (चावल) चढाई बाजा खलकलाई बिदा दिइपठाउँछन्। आधारात सम्म ज्ञानमाला भजन पनि गरिन्छ।

त्यसपछि निर्बिघ्नपूर्वक शोभायात्रा सम्पन्न भैसकेपछि पुजारीहरूले धौसघं, गोसघं मंगलाचरण पाठ गरी लिने गर्दछन्।

सबभन्दा पछिल्लो १२ वर्षे मेला २०४८ साल जेष्ठ २२ गते बुधवार, नेपाल संवत १११९ बछलागा अष्टमी, ई.सं. १९९१ जुन ५ तारिकका दिन सुसम्पन्न भएको थियो।

श्री सुदर्शनचक्र लोहनीले आफ्नो "नेपालको इतिहास" भन्ने किताबमा त्रिरत्न महाविहारको विषयमा यसरी उल्लेख गर्नुभएको छ। "नेपालको विहार निर्माण ईसापूर्व नै शुरू भएको अनुमान गर्न सकिन्छ। यस प्रकार शुरू भएको बहाल बहिल मध्ये सबभन्दा

पूरानो बहाल "त्रिरत्न विहार" किसभुक्ष विहार आदि लिन सकिन्छ" भनी उल्लेख गर्नुभएको छ ।

Daniel Wright ले History of Nepal मा त्रिरत्नविहार, तीर्थ विहार टेबहाललाई संकेत गर्नुभएको छ ।

लोकेश्वर परिचयको कथन मुताबिक यो प्रष्ट हुन्छ कि राजा नरेन्द्रदेवले गुरु बन्धुदत्तलाई पाटनको तःबहाल क्षेत्रफल जति छ त्यति नै ठूलो गरी राजकीर्ति महाविहार बनाई दिई हालको शाही नेपाल वायु सेवा निगमको नैऋत्य कोणमा एउटा बौद्ध चैत्य समेत बनाई दिएका थिए ।

यस विहारमा २ दुई वटा विहार आजसम्म मौजुद छन् । शंकटाका पुजारीहरूको चूडाकर्म गर्दा पश्चिमाभिमुख क्वापाद्यो (अक्ष्योभ्य बुद्ध) कहाँ सम्पूर्ण विधि सकेपछि पूर्वाभिमुख (अक्ष्योभ्य बुद्ध) क्वापाद्यो कहाँ भित्र लगिन्छ । यहाँ आगम देवता पनि यस्तै दुईवटा छन् ।

टेबहाल राजकीर्ति महाविहारको पूर्व पश्चिम लम्बाई ८० मिटर र उत्तर दक्षिणको चौडाई ५५ मिटर छ ।

तीर्थ विहारको पूर्व पश्चिम ४० मिटर लम्बाई र उत्तर दक्षिण सम्मको चौडाई ५५ मिटर छ भन्ने नापी विभागले निकालेको टेबहाल काठमाडौं महानगरपालिका २२ वडाको नक्सामा उल्लेख गरिएको छ ।

यस विहारभित्र श्रीभद्रकाली (लुंमढी) अजिमाको पनि मध्य भागमा एउटा सुन्दर मन्दिर छ ।

यस विहारमा चावहा, न्हैकंनतलाका तुलाधरहरूले एउटा

वज्रधातु चैत्य बनाई राखेका छन् ।

श्री संकटाको ईसान कोणमा वज्रधातु चैत्य र श्री सरस्वतीको प्रतिमा भएको चैत्य र मन्दिर टेबहालका सिखाकार (वैद्य) खलकले राखिएकोले हरेक वर्ष आश्विन शुक्ल पूर्णिमा कतिं पुन्हीका दिन पूजा गर्दछन् ।

टेबहालमा श्रीनृत्यनाथ (नासः द्यो) को एउटा मन्दिर पनि छ । यस मन्दिरमा श्री स्वयम्भूमा श्रावण शुक्लपक्ष प्रतिपदादेखि भाद्र शुक्ल प्रतिपदासम्म गुंलाबाजं (सांस्कृतिक बाजा) बजाएर पूजा गर्न जानुभन्दा १ दिन अगाडि औंसीका रातमा मतपूजा गरिन्छ । तत्पश्चात भोलिपल्टदेखि टेबहालका सिखाकारहरू स्वयम्भूमा बाजा सहित तोत्र पाठ गरी बिहान बिहान जाने गर्दछन् ।

श्रीनृत्यनाथको मन्दिरमा टेबहाल र खिचापोखरीका डंगोलहरूले धिमेबाजा सिकाउन अगाडि पूजा गरिन्छ । तालिम प्राप्त गरिसकेका सिकारुहरूलाई यही मन्दिरमा ल्याई श्रीको पूजा गर्न लगाउने चलन छ ।

लेखकका जिजुबाज्ये, लक्ष्मीनन्द वज्राचार्यले नेपाल सम्वत ९६७ कार्तिक कृष्ण द्वादशी हस्ता नक्षत्र आदित्यवारका दिन सम्पूर्ण प्रतिष्ठा गरी लेखाई राख्नुभएको धर्मपालको कथा माहात्म्यको पेज १४९ मा दक्षिण दिशाका जवाद्वीप नगर बस्ने विष्णुभद्र व्राह्मण मृत्यु भएपछि ब्राह्मणी स्त्री शिव शंकर भन्ने ब्राह्मणसंग लागी त्यसको कोखबाट पुत्र जन्म हुनेछ । शंकराचार्य भनी उसको नामाकरण गरिनेछ । उ ठूलो भएपछि बुद्ध प्रतिमा स्थानमा

शिव लिङ्ग स्थापना गरी शैव धर्म संसारमा प्रचार गर्नेछ भनी शाक्यमुनि बुद्धले आफू निर्वाण हुने बेलामा काशी देशका राजा कृतिकलाई आज्ञा भएको थियो भनी उल्लेख भएको छ। ने. सं. ३३३ मा पूर्वबाट मुगल सुलतान भन्ने राजा आई विहारहरूमा आगो लगाई दियो भन्ने पूर्णिमा पूर्णाङ्क ८ पेज नं. १० मा उल्लेख भएको छ।

यस विहारको २२०० वर्ष पुरानो ऐतिहासिक, पुरातात्विक वस्तुहरू भेटाउन नसकेको मूल कारण के भने हाम्रो नेपाल खाल्डोमा समय समयमा बौद्ध धर्ममाथि आक्रमण भएको थियो। विहारहरू ध्वंस भएका थिए। भारतबाट आएका शंकराचार्य र समसुद्दिन जस्ताको हातमा परेर बौद्ध पुरातात्विक वस्तुहरू धेरै नै नाश भएको कुरा पं. आशाकाजी वज्राचार्यको वृष जन्मावदानमा र हेमराज शाक्यको स्वयम्भू महाचैत्यमा र वावुराम आचार्यको पूर्णिमा पूर्णाङ्क २४ मा, धनवज्र वज्राचार्यको पूर्णिमा ४ पूर्णाङ्कमा र धनवज्र वज्राचार्यकै सि. एन. ए. एस. जर्नल भोलम ८ नं. मा उल्लेख भएको छ।

पुरातत्वविद र अन्वेषणकर्ताहरूले आफ्नो देशको संस्कृतिलाई रक्षा गर्न सक्दो प्रयास गर्नु हुनेछ भनी आशा गरिएको छ।

२१९ टेबहाल (२३) को तस्वीरमा देखाए मुताबिक पश्चिमपट्टि एउटा ३ तल्ले क्वापाछें (क्वापाद्यो) भगवान अक्ष्योभ्यको मूर्ति विराजमान छ। देवताको तोरणको दायाँ बायाँ सारिपुत्र र मौद्गल्यायनका मूर्ति छन्। ढोकाको माथि काठको तोरणमा महावैरोचन र चारैतिर चारवटा बुद्धका मूर्तिहरू छन्। क्वापाद्यो

पूर्वाभिमुख भएर विराजमान भएको छ ।

पहिलो तल्लामा ३ वटा काठमा कुँडेका झ्यालहरू छन् । बीचमा ठूलो र दायाँ बायाँ साना झ्यालहरू छन् । पहिले यस भवनमा झिंगटीको छाना थियो । हाल सिमेन्टको छाना छाएको छ । माथिल्लो तल्लामा पहिले ३ मुखी झ्याल थियो । हाल बीचमा ६ मुखी ऐना झ्याल र दायाँ बायाँ १/१ वटा आँखीझ्यालहरू छन् । पहिले यहाँ झिंगटीको छाना थियो । हाल करकट पाताले छाना छाएको छ । त्यसमाथि साना साना तीनवटा माटाका गजुरहरू छन् । क्वापाछें अर्थात क्वापाद्योको तोरणको अगाडि भागमा ढुङ्गाको एउटा मण्डप छ । त्यहाँ शंकटाका पूजारीहरूले १।१ महिनाको पालोमा बिहान र बेलुका नित्य पूजा गर्दा मन्दिरभित्र राखेको धर्मगण्डी गंसि बोकेर बाहिर ल्याई सानो गण्डीले १०८ पल्ट मन्त्र पढी बजाउने गर्दछन् । यो चलन अद्यापि चल्दै आएको छ ।

मन्दिर (क्वापाद्यो) को अगाडि एउटा नमोबुद्ध काभ्रेपलांचोक स्थित मूर्तिको प्रतीक स्थापना गरिएको छ । बिचमा वज्रधातु चैत्यको मूर्ति छ । बायाँतर्फ पनि वज्रधातुको चैत्यको मूर्ति स्व. धनमाया सिखाकारको दिदीको नाउँमा म मूलाचार्य र . श्री बर्द्धानन्द वज्राचार्य उपाध्याय भई यो मूर्ति, चैत्य स्थापना गरिएको हो ।

क्वापाछेंको बायाँतर्फ एउटा सानो चैत्य छ । वायुव्य कोणतर्फ हेरमाया सिखाकारको घर अगाडि एउटा वज्रधातु चैत्य छ । त्यसको पछि बायाँतर्फ प्रकाश सिखाकारको घरअगाडि एउटा

चिकं अप्पा तेलिया इँटको वज्रधातु चैत्य छ। त्यसपछि पूर्व भागमा ढुंगाको चैत्य छ। पहिले यी ३ वटै चैत्यमा वर्षको १ चोटी बुसाधं होम गर्ने गरी आएकोमा हाल बन्द भएको छ।

(२२०) बन्धुदत्तबहा (२४) टेवहाल आर. एन. ए. सी. भवनको पछाडि पश्चिमतर्फ एउटा ठूलो खुल्ला ठाउँमा छ। चारैतिर घरहरू तथा मन्दिर र चैत्य छन्। धेरै नै प्रचार भै सकेको यस बहालको नाउँ संस्कृत भाषामा प्रचण्डशील महाविहार हो। तर मानिसहरूले टेवहाल टेवहा (पुरानो नेवारी नाउँ) पनि भन्ने गर्दछन्।

मूगुद्यो मुख्य क्वापाद्यो हो। यो विहार, करिव २२०० वर्षअगाडि नै स्थापित भैसकेको धारणा छ। यो एक तल्लाको झिंगटी छानाको मन्दिर हो। भित्रपट्टि अक्ष्योभ्य तथागत पश्चिमाभिमुखेन विराजमान भएको छ। वाहिर एउटा शिलापत्र छ। दायाँ र बायाँ पट्टि हनुमान भर्ना पूजा गर्ने गरिएको दियो बाल्ने दलू जस्तो मूर्ति छन्। त्यसको पनि अगाडि दायाँ वायाँ २ वटा ढुंगाका साना चैत्यहरू छन्। टेवहालका वज्राचार्यहरूको चूडाकर्म गर्दा पहिले यसै मन्दिरमा पूजा गरिन्छ। यस मन्दिरमा बिहान बेलुका नित्यपूजा यस विहारका थकालीले आजीवन गर्ने चलन छ। यस मन्दिरभित्र रहेको धर्मगण्डी गंसी बाहिर ल्याई काँधमा राखी सानो गण्डीले १०८ पल्ट मन्त्र पढी बजाउने गर्दछन्। यो चलन यद्यापि चल्दै आएको छ।

मूगुद्यो मन्दिरको अगाडि खुल्ला ठाउँमा एउटा मण्डप छ। जहाँ चूडाकर्म गर्ने बालकहरूलाई मण्डपमा राखी कलशाभिषेक

धिने गरिन्छ। त्यसको अगाडि पट्टि २ वटा वज्रधातु चैत्यहरू छन्।

मूगुद्योको दायाँ तर्फ बिचमा धाराको दायाँ बायाँ सूर्यको मूर्ति छ। यो ने.सं. ५८२ मा स्थापना गरिएको हो र राजा यक्षमल्लको राज्य कालमा यो विहारलाई तेडो विहार नामाकरण गरिएको थियो। ने.सं. ६४० मा राजा रत्नमल्लको राज्यकालमा अर्को सूर्यको मूर्ति प्रदान गरिएको थियो जो यिनीहरूका दायाँ बायाँ छन्।

भद्रकाली (लुमढि) अजिमाको मन्दिरको केही पर पच्छिम पट्टि पूर्व तर्फ एउटा बज्रधातु चैत्य छ।

मुगुद्योको दक्षिणतर्फ २ वटा साना शिलाका चैत्यहरू छन्। टेवहालको अग्नेय कोणतिर एउटा ईनार र लुकुमहाद्योको खाल्टो छ। त्यसभन्दा अगाडि वज्रधातु चैत्यको मन्दिर छ। जो टेबहालका वीरसुन्दर सिखाकारका पुस्ताले स्थापना गरिएको हो भनिन्छ। उक्त चैत्यमा बर्षको १ चोटि कतिंपुन्हीका दिन मैले नै बुसाढं होमादिकर्म गरिआएको छु। दाता तेजमाया (टेबाहापीत) सिखाकारको योजनामा यो पूजा भइरहेको छ।

संकटाको मन्दिरको तोरणमा ने.सं. ८०३ उल्लेख भएको छ। संकटा मन्दिरको अगाडि २०३६ सालमा पुजारीहरू सबैले चन्दा उठाई गुरु बन्धुदत्त वज्राचार्यको मूर्ति स्थापना गरेका थिए। मूर्तिको अगाडि एउटा शिलाको मण्डप छ। त्यस्को दायाँ तर्फ दुई जनाको सालिक स्थापना गरिएको छ। बन्धुदत्तको मूर्तिको पछाडि अर्को बज्रधातु चैत्य छ। त्यो भन्दा पनि उत्तर तर्फ एउटा

नौ वटा मण्डल भएको मोतीगा नाउँले प्रसिद्ध क्षेत्रपाल छ। जसमा बर्षको एकचोटि संकटाको बुसाढं पूजा पोहेलागा अष्टमी (माघकृष्ण अष्टमी)का दिन होमादि कर्म गरी नौ नाग साधन गरी पूजा गरिन्छ।

यस विहारमा सात जना बोक्सी र सात वटा इनार छन् भन्ने जनश्रुति छ। अहिले एउटा नायोतुं (मुख्य इनार) मा बर्षको १ चोटि पानी लिई संकटाको बुसाढं पूजा गरिन्छ।

यहाँ बन्धुदत्तको एउटा आगम घर पनि छ जसमा संकटाका पुजारीहरूले आलोपालो गरी आषाढ कृष्ण तछलागा नक्वादिशीका दिन पूजा गरिन्छ। जुन पूजालाई नेवारी (नेपालभाषा) मा ताल्ला दिशी पूजा भनिन्छ।

संकटाको मन्दिरको दक्षिणतर्फ नायोतुं (मुख्य इनार) बारे संख्या (१२०) टेवहालको अभिलेखमा उल्लेख गरिएको छ। संकटाको फूलवारीको बाहिर पर्खालको खोपामा धेरै नै देवताका मूर्तिहरू थिए। ती सबै हाल गायव भैसकेका छन्। हाल १ वटा बुद्धको मूर्ति मात्र बाँकी छ।

महाकाल र गणेशको मूर्तिको बिचमा पश्चिमतिर टेबहालभित्र जाने बाटोमा विवाह गर्दा लसकुस (स्वागत) गर्ने ठाउँमा एउटा लामो शिला बिछ्याएको थियो। हाल पीच गर्दा यो शिला छोपिएको छ। श्रीसंकटाको १२ वर्षे मेलामा पनि सोही स्थानमा नै लसकुस (स्वागत) पूजा ५ जना थकालीनकीं वज्राचार्यहरूले गर्दछन्।

यस महाकालको बुसाढं वार्षिक पूजा वर्षको १ चोटि टेबहाल

स्थित भगतसिंहका पुत्र त्रिरत्न सिखाकार दाना भई मैले कलशार्चन पूजा गरी चैत्रकृष्ण चतुर्दशी पाहाँचह्रेका दिन चलाउँदै आएको छु।

टेवहाल भित्रका मानिसहरू मर्दा शंकटाको दायाँ तर्फको मानिसहरूको लास उक्त स्थानमा ल्याई कूताःमा राखी लैजाने चलन अद्यापि छँदैछ। तत्पश्चात शव यात्रा शुरू हुन्छ। मरेको घरबाट छ्वास अजिमा रहेको स्थानमा छ्वासय वायगु र पिचा वायगु भनी आफ्नो चलन अनुसार लुगाफाटा फाल्न लैजान्छन्।

टेबहाल भित्रका मानिसहरूको बच्चा जन्मदा सालनाल काटी उही छ्वास अजिमामा ल्याई फाल्ने गरिन्छ। उहिले जन्म मृत्युको हिसाब राख्ने काम छ्वास अजिमाबाट हुने गर्दथ्यो। हाल पञ्जिकाधिकारीको कार्यालयबाट जन्म मृत्युको दर्ता गर्ने काम भइरहेको छ।

जुद्धसडक (न्युरोड) बाट माथि दक्षिण तर्फको बाटोबाट सुन्धारा जाने बाटोको विचमा टेबहाल पस्नुभन्दा अगाडि स्थानगणेशको एक तल्लाको तामाको पाताको छाना भएको गजूर सहितको मन्दिर छ। उक्त मन्दिरमा टेबहाल, नह्रेगल्ली र खिचापोखरीका मानिसहरूको पर्व पर्वमा स्थानगणेशका रूपमा गणेश पूजा गर्ने मन्दिर यही हो। उक्त मन्दिरमा पहिले टायलको छाना थियो। हाल तामाको पाताको छाना छ। तोरण काठको राखिएको छ। टेबहाल, नह्रेगल्ली र खिचापोखरीका छोरीहरूको विवाह हुंदा यही स्थानगणेशमा ल्याई दर्शन गर्न लगाई दुलहा र दुलही दुवै तर्फको गुरुजनहरूले भौमचाखं ल्हायगु भनी दुवै

पुरोहितबिच आफ्नो आफ्नो पक्षको तर्फबाट सम्वाद गरी बिदा दिई पठाउने चलन छ ।

उक्त गणेशमा प्रत्येक वर्ष चैत्रकृष्ण चिल्लागा पाहाँचह्रेको राती घोडा-जात्राका दिन टेबहालका महर्जनहरूले धिमे आदि बाजा बजाई संकटाको मन्दिरबाट लिन आई ढलौटको मूर्ति त्यहाँ राखिन्छ । त्यस समय संकटाका पुजारीहरू नै गणेश स्थानमा पालो बस्ने चलन छ । अरू पर्व बेलामा जस जसको श्रीशंकटाको पालो पर्छ उस उसले अर्को ढलौटको मुकुट सहितको गणेशको मूर्ति उक्त मन्दिरमा लगी स्थापना गरी पूजा गर्ने चलन छ ।

कसैले भाकल गरी बोका वली चढाउन ल्याएमा श्री शंकटाको मन्दिरमा बोका संकल्प मात्र गरेर उक्त गणेश स्थानमा लगी बलि चढाउने चलन छ ।

गुठी संस्थान गुठी लगत तथा तहविल कार्यालयको मिति २०४८/२/१ को पत्रानुसार गुठी संस्थान केन्द्रीय कार्यालय व्यवस्था शाखालाई लेखेको पत्रबाट ज्ञात भए मुताबिक श्री शंकटा गुठीको गुठियारहरूले १९४१ र १९९१ सालको लगतमा आम्दानी खेत रोपनी २७ को धान मुरी २३५ ठेक्का खर्च पर्व पर्वको गुठीबाट पेश हुने जिन्सी मोरू ३२ बजार खरिद ४७ र १९९१ कोमा आम्दानी धान मुरी २६१।८।४ गहुं मुरी १८।१ स्याबजी ११० सरुवाचावल ।५ नगदी ५ क्रमशः उल्लेख गरिएको छ ।

श्री शंकटा गुठीको लागि प्राप्त १९०४, १९६४ र १९६५ सालको लालमोहरको नक्कल थान ३ प्राप्त भएको छ । सोही अनुसार ३८ रोपनी जग्गा मध्ये १९०४ साल माघ सुदी रोजका

लालमोहर बमोजिम २८.११९०५ को बाली दिने सट्टा रोपनी २१ री मध्ये बेपट्टा १० रोपनी भनी २०५३।३।१० मा प्राप्त फोटोकपी बमोजिम उल्लेख भएको देखिन्छ।

पहिले मोहीहरू सबैले शंकटाको पुजारीहरूलाई बर्षेनि कुट बुझाई आएकोमा पछि श्री ५ को सरकारको नीति मुताबिक गुठी संस्थानमा रू. १०,०००।- र रू. ४०००।- बुझाए पछि उनीहरूकै नाउँमा लालपूर्जा पाउने व्यवस्था भएपछि शंकटाका पुजारीहरूलाई साविक बमोजिम कसैले पनि बाली बुझाउन ल्याएको छैन।

पुजारीहरूले धर्म लोप नहोस् भन्ने धारणा लिई बाली नभित्रिए तापनि बार्षिक करिव रू ४०,०००।- घाटा सही साविक बमोजिम २२ जवान गुठीयारहरूले आलो पालो गरी पर्व संचालन गर्दै आएका छन्।

नयाँ व्यवस्था अनुसार मोहीहरूले गुठी संस्थानमा २०४३।४४ देखि २०५०।५१ सम्म जम्मा गर्न गएको रकम रू. २,०९,८४६।- देखिन्छ।

गुठी संस्थानबाट श्री शंकटाको नित्य पूजा गर्न मासिक रू. ३०।- को व्यवस्था भएको छ। जो हालको बजार भाउ अनुसार अति न्यून देखिन्छ। हाल मासिक रू. १००।- दरले मासिक पूजा खर्चको व्यवस्था होस् भनी गुठी संस्थानमा पूजारीहरूका तर्फबाट निवेदन दिइएको छ। अन्य देवदेवीका मन्दिरहरूमा नित्यपूजाको खर्च बृद्धि भएझैं श्री शंकटाको लागि पनि पूजा खर्च बृद्धि होला भन्ने आशा गर्न सकिन्छ।

# श्री संकटामा चलाउनु पर्ने पर्व पूजाहरू

**श्री संकटामा चलाउनु पर्ने पर्व पूजाहरू निम्नानुसार छन् ।**

१. वैशाख कृष्ण चौठीका दिन मूगुद्यो र क्वापाद्योको अगाडि होम गर्ने ।

२. श्री शंकटाको मन्दिरमा चर्या गीत सहित पूजा गर्ने जसलाई बुसाढं भनिन्छ ।

३. वैशाख शुक्ल स्वांयापुन्हीका दिन श्री शंकटामा चर्या गीतका साथ स्वांछा पूजा गर्ने ।

४. जेष्ठ शुक्ल कुमारषष्ठीका दिन इनार सफा गरी नाग पूजा गर्ने ।

५. आषाढ कृष्ण भलभल अष्टमीका दिन श्री संकटाको मन्दिरमा माथि ५ वटा गजूरलाई मांद्रोले छोपी (पुलुं खुइगु) पर्व पूजा गर्ने ।

६. आषाढ कृष्ण नक्वादिशीका दिन आगममा दिशीपूजा र पर्वपूजा चर्या गीतका साथ गर्ने ।

७. श्रावण कृष्ण गथांमुग: चह्रेका दिन नरकटको प्रतिमा बनाई बागमतीमा सेलाउन लैजाने र तत्पश्चात शंकटाको मन्दिर बाहिरदेखि छ्वाली बाँली टेबहाल बाहिर २ दुई तर्फ फाल्न लैजाने ।

८. श्रावण शुक्ल गुन्हुपुन्हीका दिन भ्यागुतोलाई भात खुवाउने ।

९. आश्विन शुक्ल प्रतिपदाका दिन जमरा राख्ने र नवरात्री भर टीकाको दिन सम्म श्री शंकटामा बत्ती बाली पूजा गर्ने ।

१०. आश्विन शुक्ल महाअष्टमीका दिन छानामाथि गजूर छोपेको

मान्द्रो निकाल्ने । त्यो दिन श्री ५ महाराजाधिराज सरकारको पनि श्री शंकटामा सवारी होइबक्सिन्छ । त्यो दिन शंकटामा पर्व पूजा गर्नुपर्दछ ।

११. पौष शुक्ल मिलापुन्हीको राती टेबहालमा मानिसको टाउको भन्दा माथि सम्म पुग्ने गरी काठको कप्टेरा राखी होम गर्ने र प्रसादको रूपमा भट्मास बाँड्ने ।

१२. माघ कृष्ण सप्तमीदेखि दशमी सम्म श्री शंकटाको बुसाढं पूजा गर्ने । होमादि पूजा सकिए पछि श्री शंकटामा चर्या गीत सहित पूजा गर्ने ।

१३. फाल्गुन कृष्ण पंचमीदेखि नवमी सम्म (निमन्त्रणा पूजादेखि होमादि, महावली) पर्व पूजा चलाउने । राती महावली पूजा सकिए पछि अष्टमीको रातमा टक्सारभित्र पनि डमरू बजाई वली चढाई खिचापोखरी नछेगल्ली भै पुनः टेबहालभित्र आई मोतीगालमा बाकी वली सबै फाल्ने ।

प्रत्येक १२।१२ वर्षमा कटुवाल दहमा गई १२ वर्षे मेलापूजा गर्ने ।

उपरोक्त बमोजिम श्री शंकटामा वार्षिक पर्व पूजा साविक बमोजिम गरिआएको छ ।

वार्षिक पर्व पूजा चलाउन र १२ वर्षे मेला चलाउन कुनै किसिमको आय श्रोत हाल नभएकोले श्रद्धालु भक्तजनहरूबाट यथाशक्ति श्रद्धापूर्वक प्रदान गरिएका चन्दा र हामी पुजारीहरूले आफ्नै तर्फबाट नपुग रकम हाली शंकटाको पर्व पूजा चलाउँदै आएका छौं ।

*रत्नकाजी विजयरत्न वज्राचार्य लिखित "नेपाःदेःया विहारया ताःचा"बाट साभार*

# राजकीर्ति महाविहार
# (टेबहा)

यस विहारलाई बन्धुदत्त महाविहार पनि भन्दछन् । बन्धुदत्त रहेकोले नै यस विहारको नाउँ यसरी रहनगएको देखिन्छ । तर उक्त विहारका वज्राचार्यहरूको भनाइ अनुसार संकल्प वाक्य पढ्दा "राजकीर्ति महाविहारोत्पन्न" भन्ने चलन छ । यस आधारमा लिच्छवि कालको आधारमा विचार गर्दा राजविहार निर्माण गरिएको भन्ने सिद्ध हुन आउँछ । राजविहार निर्माण गर्ने राजाहरू धर्मदेव र अंशुवर्मा हुन् * ती दुई मध्ये कसले राजविहार स्थापना गरेका हुन् यकीनसाथ भन्न नसकिए तापनि विहारको संकल्प वाक्यको आधारमा राजकीर्ति महाविहार पहिले नै भै सकेको देखिन्छ । यस विहारमा गुरु बन्धुदत्त रहेका थिए ।

"लोकेश्वर परिचय" को आधार अनुसार राजा नरेन्द्रदेवका ३ तीन छोराहरू मध्ये बीचका रत्नमल्ललाई श्री बन्धुदत्त गुरुकहाँ राखेका थिए भन्ने कुरालाई हेर्दा राजकीर्ति विहार पछि मात्र निर्माण भएको हो कि भन्ने देखिन्छ । यो अन्वेषणको विषय हो ।

---

* लिच्छविकालको अभिलेख पृष्ठ ३२४, ४५४।

यस महाविहारमा दुई विहार अहिलेसम्म मौजूद छन् । चूडाकर्म गर्दा पश्चिमाभिमुख क्वापाद्यो समक्ष सबै विधि सकिए पछि मात्र पूर्वाभिमुख क्वापाद्यो कहाँ लैजान्छन् । आगम देवताहरू पनि दुइटै छन् । यसबाट स्पष्ट हुन्छ कि पहिले बनाएको विहार बन्धुदत्त रहेको राजकीर्ति विहार नै हुनुपर्छ । यो राजकीर्ति विहार राजा नरेन्द्रदेवको सहयोगबाट बनाएको विहार नभएको देखिन्छ । किनभने टेबहालको जलद्रोणको अभिलेख अनुसार पहिले नै बनिसकेको देखिन्छ । पहिलेका राजाहरूले निर्माण गरेको विहार भएकोले नै राजकीर्ति विहार भनेको हुनुपर्छ । यो असम्भव होइन सम्भवै कुरा हो ।

अहिले यस विहारलाई विभिन्न विद्वानहरूको भनाइ अनुसार बन्धुदत्त विहार, त्रिरत्न विहार, तेधो विहार, तीर्थविहार, तेतबहा आदि नामले सम्बोधन गरिएको छ ।

नेपाल भाषाबाट अनूदित ।

(१२० संख्या)

# टेबहालको अभिलेख

काठमाडौं टेबहालमा दक्षिणपट्टि पर्खालमा एउटा जलद्रोणी रहेको छ । त्यसैमा यो अभिलेख कुँदिएको छ । यसको अभिलेख कुँदिएको भाग १३ अंगुलम्बा ३ अंगुल चौडा छ । यहाँ संवत छैन ।

संस्कृत-सन्देश २।१-३-३ मा घनश्याम+ऐश्वर्य धर+गौतमवज्र-कुमारधरद्वारा यो छापिएको छ । नोलीद्वारा ६३ संख्याको रूपमा यो छापिएको छ ।

## मूलपाठ

१. रत्नत्रयम्भगवदार्य्य मुदारवर्ण मुद्दिश्य सत्वपरिभोग निमित्त मेतो

२. कूपञ्जलद्रवणिकाञ्चशुभायपित्रोः शाक्यो यतिर्विहितबानप्रियपालनामा

## अनुवाद

(आफ्ना) आमा बाबुको कल्याण होस् भनी प्रियपाल नाउँ भएका शाक्यभिक्षुले उज्वल कीर्ति भएका उहाँ ठूला रत्नत्रय (बुद्ध, धर्म, संघ) लाई लख गरेर प्राणीहरूको उपभोगको निमित्त यो कूवा र टुटे धारा बनाए ।

## व्याख्या

यस अभिलेखमा संवत पनि छैन; राजाको नामोल्लेख पनि छैन । यसकारण यसको समय निश्चित गर्ने आधार यसको लिपि मात्र रहेको छ । यसको लिपि अंशुवर्मा र नरेन्द्रदेवको बीचको

ताकाको छ । यसकारण यसलाई यहाँ राखिएको हो ।

जनतालाई दैनिक उपभोगको लागि आवश्यक कुरा मध्ये पानी पनि एक हो । यसकारण जनहित कार्य गरी पुण्य कमाउन चाहनेहरू धारा आदि बनाउन लाउँथे । मुहानदेखि नै विशेष प्रवन्ध गरी पानी ल्याउनु पर्ने हुनाले सामान्य व्यक्तिले प्रणाली (धारा) बनाउन सक्नु सम्भव थिएन । साधारण उपयोगको लागि "जलद्रोणी" सजिलो र किफायत पनि हुनाले "जलद्रोणी" लोकप्रिय बन्यो । लिच्छविकाल र मध्यकालमा बनेका अनेक जलद्रोणी हाम्रो यहाँ अहिलेसम्म भेटिन्छन् । प्रियपाल शाक्यभिक्षुले बनाउन लाएको जलद्रोणी टेबहालमा अहिले छँदैछ । यस ताका भारतमा पनि "जलद्रोणी" प्रचलित थियो । कवि वाणले कादम्बरीमा जलद्रोणीको वर्णन ठाउँ ठाउँमा गरेका छन् ।

बौद्ध धर्मका प्रवर्तक भगवान बुद्ध शाक्य वंशका थिए । यसकारण बौद्ध समाजका शाक्य वंशका अरू व्यक्तिको पनि केही प्रतिष्ठा थियो । शाक्य वंशका व्यक्ति भिक्षु बन्दा उनलाई अलि विशिष्ट दृष्टिले हेरिन्थ्यो तथा तिनीहरू शाक्यभिक्षु कहलाएका थिए । यस अभिलेखबाट भिक्षु प्रियपाल शाक्यवंशका थिए भन्ने थाहा पाइन्छ । चाबहिलको अर्को अभिलेखमा पनि शाक्यभिक्षुको उल्लेख भएको छ । मध्यकालका अभिलेखमा पनि शाक्य वंशजहरूको अनेक उल्लेख पाइन्छ । यसबाट लिच्छविकालमा यहाँ शाक्यहरूको बसोबास थियो भन्ने थाहा पाइन्छ । बुद्धको अन्तिम समयतिर कपिलवस्तुका निकै शाक्यहरू यहाँ पसेको वर्णन बौद्ध वाङमयमा पाइन्छ । ❋

हाल उक्त जलद्रोणीमा पूर्णरत्नले उनका आमा-बाबुको नाउँ उल्लेख गरी एउटा धाराको टुटी राखी भित्र शंकटाको बगैंचामा सिमेन्टको पानी ट्यांकी बनाई सोबाट जलद्रोणीमा पानी ट्यूबवेल राखेको पानी भरिआएको छ। पानी ट्यूवेलबाट निकाल्न क्रमटन पानी तान्ने मेसीन र ट्यांकी (ओभरहेड) स्कूल सटल माथि कौसीमा राखी शंकटामा नित्य पूजालाई समेत सो पानीबाट कार्य संचालन भैरहेको छ। पानी ट्यांकी एकजना दाता अवका स्टोर्स र अर्को मेसीन राखिदिनुहुने दाता मारवाडीको नाम थाहा हुन सकेन। मिसीन तथा ट्यांकी जडान गर्नको लागि अर्को दाता होटेल सेराटनका एकजना शेर्पा या लामाज्यूले रू. १०,०००।- चन्दा दिनुभएको थियो। त्यसले नपुगी हामीहरूले पुनः रू ३०००।- चन्दा उठाई सो कार्य ३ दिन मा पुरा गर्‍यौं।

टेबहालभित्र पस्नु अगाडि दायाँतर्फ उभिएको गणेशको मूर्ति छ। बायाँ पसलभित्र महांकालको मूर्ति छ। संख्या १२, टेबहालको मानदेवको पालाको गुहमित्रको अभिलेखमा निम्न प्रकार उल्लेख गरिएको छ।

काठमाडौं राजकृति महाविहार (टेबहाल) भित्र पस्ने ढोकैनिर बायाँ पट्टिको एउटा पसलभित्र महाकालको मूर्ति रहेको छ। त्यसैको पादपीठमा यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुंदिएको भाग ५० अङ्गुल लम्बा ३३ अङ्गुल चौडा छ। यहाँ संबत् ४०२ छ।

लेभीद्वारा ३ संख्याको रूपमा यो छापिएको छ। संस्कृत-सन्देश १।९ मा धनवज्र वज्राचार्य+ज्ञानमणि नेपालद्वारा पनि यो

